ओ३म्

# बाइबलको अभद्रोपदेश

## (संशोधित एवं परिवर्धित संस्करण)



पशून् पाहि..!! ⟹ पशुहरुको रक्षा गर..!

अहिंसा परमो धर्मः ⟹ अहिंसा नै परम धर्म हो..!


लेखकः

पण्डित वेद प्रकाश शास्त्री

अनुवादकः प्रेम आर्य

# यज्ञ

## यज्ञो वै श्रेष्ठतं कर्म।।

श्रेष्ठकर्म गर्नु नै सबभन्दा महान यज्ञ हो। चाहे त्यो हिन्दु होस्, ईसाई होस्, मुस्लिम होस्, जैन होस्, बुद्धिस्ट होस्, सिख होस्, नास्तिक होस्, आस्तिक होस्, गरिब होस्, धनि होस्, स्त्री या पुरुष नै किन नहोस्, यदि उसले श्रेष्ठकर्म गर्दछ भने त्यसलाई यज्ञशील नै भनिने छ।

केवल अग्निमा घृताहुति अर्पित गर्नु मात्र यज्ञ हैन, यज्ञ एक महान त्यागको भावना हो। यज्ञ "अध्वर" अर्थात्, हिंसा रहित छ। त्यसैले यज्ञ अहिंसा र सौहार्दको प्रतिक हो। विद्या, धनादीको दान, सहायता गर्नु, अरुको दुःख हटाउनु, मनले पनि कसैको अशुभ नसोंच्नु यज्ञ हो। सत्पुरुषहरुको संगति द्वारा जगत कल्याणार्थ सदज्ञान प्राप्त गर्नु र सद्व्यवहार सिक्नु पनि यज्ञ हो। उन्नत शिल्प, उन्नत उद्योग, उन्नत विज्ञानमा प्रवृत्त हुनु पनि यज्ञ नै हो यदि त्यसमा क्षुद्र स्वार्थको भावना छैन भने।

यज्ञ केवल साधन मात्र हैन, सद्गुण रुपी साध्य पनि हो। जब सम्म यज्ञ बाट मनका भावनाहरुको उदारीकरण हुँदैन, तब सम्म यज्ञको वास्तविक उद्देश्य पूर्ण नै हुन सक्दैन। वस्तुतः यज्ञ सर्वकल्याणरुप हो।

## आर्य संस्कृतिको श्रेष्ठता

उच्च भावनाहरुको प्रेरक, आर्य संस्कृति श्रेष्ठ महान्।
यसको ज्योति चतुर्दिक् फैल्यो, गुण गौरव गरिमाको खान।।
श्रेष्ठ मान्यता छ यसको, जसको लक्ष नै छ विश्व कल्याण।
आत्मा परात्मा मानवको, निश्चित छ यसमा सफल विधान।।
एक ईश्वर हो जगको कर्ता, जो अजर अमर अविकार।
शुद्ध पवित्र सर्वव्यापक ऊ, अखिल जगत्को सर्वाधार।।
जीवात्मा छ मानव तनमा, जसले स्वतन्त्र गर्दछ कर्म।
तर आर्य संस्कृति भन्दछ, जनको सच्चा साथि धर्म।।
"सत्यं वद" "धर्मं चर" को यसले, गर्दछ पावन उपदेश।
जीवनको सब क्षेत्रमा होस्, संयम यसको लक्ष विशेष।।
जस्तो कर्म गर्दछ मानवले, त्यस्तै फल हुनेछ प्राप्त।
लिप्त हुँदै संसारिक भोगमा, जीवनलाई नगर समाप्त।।
आर्य संस्कृतिले भन्दछ, गर नारिहरुको सम्मान।
नारी नरका सहयोगी हुन्, अर्धांगिनीको गरियो विधान।।
जगका कैयौं संस्कृतिहरु, केवल नाम शेष छन्, भैसके समाप्त।
तर आर्य संस्कृति भने सुगन्ध झैं छ, हुँदैछ विश्वमा व्याप्त।।

# आउनुहोस्, कथनी र करनी एक बनाऔं

**नीतिकारले अत्यन्त मनोहर शब्दमा जीवनको सार भनिदिएका छन्-**

**मनस्येकं वचस्येकं कर्मण्येकं महात्मनाम् ।**

**मनस्यन्यत् वचस्यन्यत् कर्मण्यन्यत् दुरात्मनाम्।।**

भावार्थ - महान तथा सज्जन व्यक्तिहरुले जस्तो मनमा सोंचदछन्, त्यस्तै बोल्छन् र त्यस्तै कार्य रुपमा परिणत पनि गर्दछन्। तर नीच तथा दुष्ट स्वभाव भएका व्यक्तिहरु सोंच्छन् अर्कै, भन्छन् कुनै र गर्दछन् अरु कुनै अर्थात्, यस्ता व्यक्तिहरुको मनसा, वाचा, कर्मणा भिन्न-भिन्न हुने गर्दछन्।

**वाच्यर्था नियताः सर्वे वाङ्मूला वाग्विनिःसृताः ।**

**तांस्तु यः स्तेनयेद् वाचं स सर्वस्तेयकृन्नरः ॥**

(मनुः४/२५६)

जुन वाणीमा सब अर्थ अर्थात् व्यवहार निश्चित हुन्छन्, त्यो वाणी नै जसको मूल हो र जुन वाणी द्वारा नै सब व्यवहार सिद्ध हुन्छन्, जसले उक्त वाणीलाई चोर्छ अर्थात् मिथ्या भाषण गर्दछ, त्यो सबै किसिमको चोरी आदि पापको भागीदार हुन्छ। त्यसैले मिथ्या भाषण गर्न छोडेर सदा सत्य भाषण गर्ने गरौं.. ।

**सत्यं ब्रूयात् प्रियं ब्रूयात् न ब्रूयात् सत्यमप्रियं।**

**प्रियं च नानृतं ब्रूयात् एष धर्मः सनातनः॥**

(मनुः ४/१३८)

सत्य बोल, प्रिय बोल, अप्रिय सत्य नबोल, प्रिय झुट नबोल, यही सनातन धर्म हो।

आज भन्छ भोलि भज्नेछु, भोलि भन्छ फेरी भोलि।
भोलि-भोलि भन्दा-भन्दै जिन्दगी नै हुन्छ झोली।।
मिठो आश्वासन र विश्वास दिएर मनलाई दियौ रिझाई।
एकान्तमा स्वयंलाई हेर, किन हिंड्दैछौ सिरमा पाप चढाई।।
कसैको काम गर्न सक्दैनौ यदि भने, सिधै भन यो म बाट हुँदैन।
सत्य कुरो भनिदियौ यदि भने, कसैको पनि मनलाई दुःखले छुदैन।।



## महर्षि दयानन्द उवाच

सबै मतमा रहेका सत्य कुराहरु सबका लागि अविरुद्ध हुनाले स्वीकार गरेर जुन जुन मतमतान्तरहरुमा भएका मिथ्या कुराहरु छन् तिनको खण्डन गरिएको छ। जसरि यो देशका मतमतान्तरहरुका झुटा कुराहरुको बिना पक्षपात यथातथ्य प्रकाश गर्दछु, त्यस्तैगरि अरु देशस्थ या मतोन्नतिहरुका साथ पनि व्यवहार गर्दछु। यो लेख केवल सत्यको वृद्धि र असत्यको ह्रास हुनको लागि मात्र हो, कसैलाई दुःख दिने या हानि गर्न अथवा मिथ्या दोष लगाउनका लागि हैन। जसले पक्षपातरुप यानारुढ भएर हेर्ने गर्दछन्, तिनलाई न आफ्नो न त पराए गुण-दोष विदित हुन सक्छ।

## श्रेष्ठाचरण

**यद् यदाचरति श्रेष्ठस्तत तदेवेतरो जनः।**
**स यत प्रमाणं कुरुते लोकस्तदनुवर्तते।।**

(गीताः ३/२१)

भावार्थः श्रेष्ठ व्यक्तिले जस्तो आचरण गर्दछ, अन्य मानिसले पनि त्यस्तै आचरण गर्दछन्। उसले जुन कुरालाई मान्यता दिन्छ, संसारले त्यसको अनुसरण गर्दछ। अर्थात्, श्रेष्ठ पुरुषलाई देखेर अरुले पनि त्यस्तै आचरण गर्दछन्। अतः अनुकरणीय बन्नु पर्दछ। वस्तुतः योगिराज श्रीकृष्णले यस्तै गर्नुभएको थियो।

## नारी सम्मान

**यत्र नार्यस्तु पूज्यन्ते रमन्ते तत्र देवताः।**
**यत्रैतास्तु न पूज्यन्ते सर्वास्तत्राफलाः क्रियाः ।।**

(मनुः ३/५६)

**भावार्थः जुन कुलमा नारिहरुको पूजा अर्थात् सत्कार हुन्छ, उक्त कुलमा दिव्य गुण, दिव्य भोग र उत्तम सन्तान हुन्छन् र जुन कुलमा नारिहरुको पूजा या सत्कार हुँदैन, त्यहाँ उनका समस्त कर्म निष्फल हुन्छन्।**

**देशमा आज ईसाईपन्थ तिव्र गतिमा फैलदै छ। पिछडिएका जनताहरुमाझ सेवाको नाममा उनीहरुले जुन जाल फैलाएका छन्, त्यो सबैका लागि गम्भीर चेतावनी हो। समयको माग छ कि हामीहरु अज्ञान र अन्धविश्वासमा आधारित ईसाईपन्थको यथार्थता बुझेर यसको बिष बाट देशलाई बचाउने संकल्प लिऔं...!**

## विषय सूची


| क्रमांक | विषय | पृष्ठ |
|---|---|---|
| १ | धर्मशास्त्रको सदुद्देश्य | ६-७ |
| २ | बाइबलमा कदाचार | ७-९ |
| ३ | भेदभावको जनक यहोवा परमेश्वर | ९ |
| ४ | असहिष्णु यहोवा परमेश्वर | ९-१० |
| ५ | प्रतिमा भंजक यहोवा परमेश्वर | १०-११ |
| ६ | विष्ठाको रोटि | ११ |
| ७ | मदिरा खुवाउनुको उद्देश्य | १२ |
| ८ | शान्तिको दूत ईसा | १२-१३ |
| ९ | स्वर्गको मार्ग | १३ |
| १० | नारिको अपमान | १४ |
| ११ | पवित्र हुने विधि | १४-१५ |
| १२ | अहिंसा र प्रेमको पूजारी ईसा | १५ |
| १३ | पशुबलि | १५-१७ |
| १४ | नरबली | १७-१८ |
| १५ | पापकर्म बाट मुक्ति | १८-१९ |
| १६ | कुष्ठ रोगको विचित्र उपचार | १९-२१ |
| १७ | लाखौं निर्दोष पशुहरुको बलि | २१-२३ |
| १८ | वेदमा सर्वकल्याणको कामना | २३ |
| १९ | पशुहिंसकहरुका लागि दण्डविधान | २३ |
| २० | अहिंसाको महत्ता | २३-२४ |


वैदिक संस्कृतिको सर्वोच्चता

महान वेदवेत्ता, धर्मशास्त्रका ज्ञाता महर्षि मनुको अत्यन्त गौरवपूर्ण घोषणा छ-

एतद्देशप्रसूतस्य सकाशादग्रजन्मनः। स्वं स्वं चरित्रं शिक्षेरन्पृथिव्यां सर्वमानवाः ।। (मनुः २/२०)

अर्थात्, यो आर्यावर्त्त देश संसारमा विद्वानहरु, ज्ञानिहरु, विचारकहरु, चिन्तकहरु, वैज्ञानिकहरु तथा अभियन्ताहरुको अग्रजन्मा हो जहाँ विश्व भरिका मानिस आएर आँफू अनुकुल चरित्र, आचार-व्यवहार आदिको शिक्षा ग्रहण गर्दछन्।

# बाइबलको अभद्रोपदेश

## १- धर्मशास्त्रको सदुद्देश्य

धर्मशास्त्रहरुले सदैव धर्मानुकूल सदाचरणको नै उपदेश दिन्छन्; अधर्म एवं कदाचरणको हैन। किनकि धर्मशास्त्रको उद्देश्य मानवको नैतिक, चारित्रिक, सामाजिक आदि सबै दृष्टिकोणले सर्वांगीण विकास गर्नु हो, अधःपतन तिर लैजानु हैन।

दर्शन शास्त्रमा भनिएको छ-

**यतोऽभ्युदयनिःश्रेयससिद्धिः स धर्मः (वैशेषिकः १। १। २।)**

अर्थात्, जे गर्दा लौकिक एवं पारलौकिक उन्नति हुन्छ, त्यहि धर्म हो।

तर बाइबल यो कसौटीमा खरो उत्रिदैन। उदाहरणतः -

येहोवा ईश्वरले सृष्टि रचना गरेर आदम र हव्वालाई उत्पन्न गर्यो, तर उनीहरुलाई भन्यो-

बाइबलः परमप्रभु परमेश्वरले त्यस मानिसलाई आज्ञा दिनु भयो। परमप्रभु परमेश्वरले भन्नुभयो, "तिमीले कुनै चिन्ता बिना यस बगैंचाको कुनै पनि रुखबाट फलहरु खान सक्छौ।" तर तिमीले त्यस रुखको कुनै फल खानु हुँदैन जसले असल र खराबको ज्ञान दिन्छ, किनभने जुन दिन तिमी त्यस रुखको फल खान्छौ निश्चयनै त्यस दिन तिमी आफै मर्नेछौ।" (उत्पत्तिः २/१६-१७)

समिक्षाः देख्नुभो त येहोवा परमेश्वरले मानव सृष्टिको रचना त गर्यो तर तिनलाई असल र खराबको ज्ञान दिएन, वृक्षको फल खान निषेध गरिदियो जसले गर्दा उनीहरुलाई ज्ञान हुन नसकोस्। यसको अर्थ त यहि हुन्छ कि इश्वरले उनको उन्नति चाहँदैन। सम्भवतः यसकारणले कि यदि जनता अज्ञानी भए भने त उसको वशमा रहने छन्। ज्ञानी भए भने त उसको विरुद्ध हुन सक्छन्।

यसको विपरित वैदिक धर्म अनुसार परमात्माले सृष्टिको आदिमा चार ऋषिहरु- अग्नि, वायु, आदित्य र अंगिरालाई क्रमशः ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेदको ज्ञान दिनुभो। तिनीहरुले ब्रह्मालाई र त्यसपछि ब्रह्माले वेद प्रचारको कार्यलाई अगाडी बढाए।

बाइबलको येहोवा भन्दा त बरु शैतान नै कहीं अधिक राम्रो छ। उसले मनुष्यको भलो चाहन्छ। ज्ञान प्राप्तिका लागि प्रेरित गर्दछ। प्रशंसा सधैं ज्ञान दिनेको हुन्छ; अज्ञानताको अन्धकारमा राख्नेको हुँदैन। अतः शैतान अधिक प्रशंसनीय छ।

उसले स्त्री संग भन्यो-

बाइबलः

तर सर्पले स्त्री (हव्वा)लाई भने, "तिमीहरु निश्चय मर्ने छैनौ।" तब त्यो स्त्रीले त्यस रुखको फल हेर्नमा राम्रो र खानमा पनि असल बुझि कारण त्यस रुखको फलले ज्ञान दिन्थ्यो त्यस रुखबाट केही फलहरु टिपेर खाई अनि आफूसंग भएको मानिस (आदम)लाई पनि खान दिई र उसले पनि खायो। तब तिनीहरुले केही अनौठो अनुभव गरे। तिनीहरुले देखे तिनीहरु नाङ्गै थिए। यसर्थ तिनीहरुले नेभाराको पात गाँसे अनि आफ्ना निम्ति लुगाहरु बनाए। (उत्पत्तिः ३/४,६,७)

समिक्षाः जय होस् त्यो शैतानको, जसले आदम र हव्वालाई ज्ञान दियो, नत्र ऊ अज्ञानी नै रहने थियो। उनीहरुलाई आँफू नाङ्गो भएको र शरीर ढाक्नु पर्छ भन्ने कुरो थाहै हुने थिएन। येहोवा परमेश्वर झुटो पनि छ किनकि उसले भनेको थियो — त्यो फल खायौ भने अवश्य मर्नेछौ, तर खाए पछी पनि तिनीहरु मरेनन्।

## २- बाइबलमा कदाचार

येहोवा परमेश्वरले भन्छ-

बाइबलः "तिमीले स्त्रीसित जस्तै पुरुषसित सहवास नगर। त्यो घोर पाप हो।" (लैवः १८/22)

समिक्षाः यति हुँदाहुँदै पनि यिनको तथाकथित् धर्मग्रन्थ- बाइबलमा अप्राकृतिक मैथुनको संकेत पाइन्छ-

बाइबलः तिनीहरूले लुतलाई बोलाए अनि भने, "राती तिम्रो घरमा आएका दुइ मानिसहरू कहाँ छन्? तिनीहरूलाई बाहिर हामी भएकोमा ल्याऊ जसले गर्दा तिनीहरूसित हामी संभोग गर्न चाहन्छौं।" (उत्पत्तिः १९/५)

समिक्षाः कस्तो घृणित उपदेश हो? के यसबाट कुनै व्यक्तिले चरित्र निर्माणको शिक्षा लिन सक्छ? यसलाई पढेर मनुष्यको मन कुत्सित नै हुनेछ। अतः महर्षि मनुले भन्छन्-

**आचारः परमो धर्मः।। (मनुः १/१०८)**

सदाचार नै परम धर्म हो।

**आचाराल्लभते ह्यायुः ।। (मनुः ४/१५६)**

सदाचारले नै दिर्घायु प्राप्त हुन्छ।

**आचारेण तु संयुक्तः सम्पूर्णफलभाग्भवेत्।। (मनुः १/१०९)**

आचारले युक्त व्यक्तिलाई नै सम्पूर्ण सुखको प्राप्ति हुन्छ।

**सर्वस्य तपसो मूलमाचारम् जगृहुः परम्।। (मनुः १/११०)**

सबै तपस्याहरुको मूल नै आचरणलाई मानिएको छ।

जेहोस्, कुरो यहीं समाप्त भएको छैन। लुत घर बाट निस्केर भन्न थाल्यो-

बाइबलः सुन, कुनै पुरूषसित सहवास नगरेका मेरो दुइ जना छोरीहरू छन्। म तिमीहरूलाई सुम्पिदिनेछु र आफ्नो इच्छा अनुसार जे गर्न मन लाग्छ तिनीहरूसित गर। (उत्पत्तिः १९/८)

समिक्षाः सत्य भन्नु पर्दा लुतले ति पुरुषहरुको पनि रक्षा गर्नु पर्थ्यो र आफ्नी छोरीहरुको पनि। यदि पुरुषहरुको रक्षा गर्न असमर्थ थियो भने आफ्नी छोरीहरुको त अवश्य रक्षा गर्नु पर्ने थियो। तिनको सतित्व रक्षा गरेर ति पुरुषहरुलाई फिर्ता पठाइ दिनु पर्ने थियो। किनकि उनीहरुले उसकी छोरीहरुको माग ति पुरुषहरुको बदलामा गरेका थिएनन्। यसको विपरित लुत आफ्नी छोरीहरुलाई नै दिन तयार भयो। यो पनि कुकर्मलाई नै बढावा दिनु नभएर अरु के हो? र यो भन्दा पनि अधिक विचित्रको कुरो त यो छ कि त्यहि लुतका छोरीहरुले आफ्नै जन्म दिने पिताका साथ सहवास गरेर संतानोत्पत्ति गरे। एकदिन उनीहरुले भन्न थाले-

बाइबलः यसर्थ हामीले हाम्रो पितालाई दाखरस पियाएर मताऊँ र तिनीसित सम्बन्ध गरौं। यसरी हाम्रो परिवारलाई जीवित राख्न आफ्नो पितालाई प्रयोग गर्न सक्छौ।" त्यस रात यी दुइ दिदी-बहिनीहरूले आफ्नो पितालाई मद्य दिएर पूरा मताए। तब दिदी चाँहि आफ्नो पिताको ओछ्यानमा गई अनि उनीसित सहवास गरी। लूत यति मातेका थिए कति बेला छोरी आई र गई उनलाई थाहा भएन। अर्को दिन दिदीले आफ्नी बहिनीलाई भनिन्, "हिजो राती, म हाम्रा पितासित सुतें। आज राती, फेरि उनलाई मताऊँ अनि तिमी उनको ओछ्यानमा जान सक्छौ अनि उनीसित शारीरिक सर्म्पक राख्नसक्छौ। यस प्रकार हामी आफ्नो परिवारलाई निःसन्तान हुनबाट बचाउन सक्छौं।" त्यस राती ती दुइ बहिनीहरूले आफ्नो पितालाई दाखरस पियाएर मताए अनि सानी चाँहि छोरी उनको ओछ्यानमा गई र सहवास गरी। तर फेरि लूत यति साह्रो मातेका थिए कति बेला को केटी उनको ओछ्यानमा सुत्न आई अनि उठेर गई उनलाई पत्तै भएन। लूतका दुबै छोरीहरू आफ्ना पिता बाट गर्भवती भए..। (उत्पत्तिः ३२-३६)

समिक्षाः छोरीहरुको आफ्नै पिताका साथ कति अभद्र एवं घृणित व्यवहार हो यो..! आफ्नै पिता बाट गर्भवती भए? अर्थात्, लूत आफ्ना छोरीहरुको पनि पिता र उनका सन्तानहरुका पनि पिता..?!! छैन त सबलाई अचम्ममा पार्ने र जिब्रो टोक्न लाउने कुरो..! के यो चारित्रिक पतनको चरमसीमा हैन? यो भन्दा अधिक निच कर्म अरु के हुन्छ? त्यसैले महर्षि मनुले सबलाई साबधान गरेका छन् -

**मात्रा स्वस्रा दुहित्रा वा न विविक्तासनो भवेत्।**
**बलवानिन्द्रियग्रामो विद्वांसं अपि कर्षति।।**
(मनुः २/१५)

इन्द्रियहरु बडो बलवान हुन्छन्। तिनलाई रोक्नु विद्वानका लागि पनि अत्यन्त कठिन छ। त्यसैले मनुष्यहरु आमा, दिदी-बहिनी र छोरी-चेलीका साथ पनि एक आसनमा नबस्नु अर्थात् एकान्त सेवन नगर्नु।

अब तपाइँ स्वयं सोंच्नुहोस, बाइबल पवित्र पुस्तक हो या अपवित्र? छोरीहरुले आफ्नै पिता संग गरिएको कुकृत्य कति धार्मिक छ र कति अधार्मिक? पाठक आँफैले विचार गर्नुहोला।

यस्तै प्रकारको एउटा वर्णन अर्को स्थानमा पनि भेटिन्छ-

बाइबलः त्यो लेवी मानिस र तिनीसित भएका मानिसहरू आनन्दित भइरहेको बेला त्यस शहरका केही मानिसहरूले त्यो घरलाई घेरे। ती अत्यन्त नराम्रा मानिसहरू थिए। तिनीहरूले ढोका धकेल्न थाले। तिनीहरूले त्यो वृद्ध मानिसलाई कराए त्यो घर जसको थियो। तिनीहरूले भने, "त्यो मानिसलाई बाहिर ल्याऊ, जो तिम्रो घरमा आएको छ। हामी त्यस व्यक्तिसित सहवास गर्न चाहन्छौं।" त्यो वृद्ध मानिस बाहिर निस्के अनि ती नराम्रा

मानिसहरूसित बात गरे। उसले भेन, "होइन, मेरो मित्रहरू, यस्तो नराम्रा कुराहरू नगर! ती मानिसहरू मेरो घरका अतिथि हुन। यस्तो भयानक पाप नगर। हेर यहाँ मेरी छोरी छे। उसले कहिले पनि अघि कसैसित सहवास गरेकी छैन। म त्यसलाई अब बाहिर तिमीहरू कहाँ ल्याउँछु। तिमीहरू जसरी चाहन्छौ त्यसलाई उपयोग गर्न सक्छौ। तर यी मानिसको विरूद्ध यस्तो भयानक पाप नगर।" तर ती नराम्रा मानिसहरूले वृद्ध मानिसको कुरा सुनेनन्। यसर्थ त्यस लेवी मानिसले आफ्नी सेविकालाई समातेर ती दुष्ट मानिसहरूसित बाहिर पठाइदिए। ती दुष्ट मानिसहरूले उसलाई घात पुर्याए अनि रातभरि उसलाई बलात्कार गरे। तब बिहान उज्यालो भए पछि तिनीहरूले उसलाई जान दिए। (न्यायकर्ताः १९:२२-२५)

समिक्षाः यस बाट त यहि प्रतित हुन्छ कि ईसाईहरुका लागि चरित्र, सदाचार, मान-मर्यादा आदिको कुनै मूल्य छैन।यो भन्दा अधिक चरित्रको पतन अरु के हुन सक्ला? यस्ता कामान्ध वक्तिका बारेमा कति सटिक कथन छ यहाँ-

**दिवा पश्यति नोलूकः काको नक्तं न पश्यति ।**
**अपूर्वः कोपि कामान्धो दिवा नक्तं व पश्यति ।।**

(चाणक्य निति)

अर्थः उल्लूले दिनमा देख्दैन, कौवाले रातमा देख्दैन तर कामान्ध एक विचित्र प्राणी हो जसले न रातमा देख्छ न दिनमा।

**दुराचारो हि पुरुषो लोके भवति निन्दितः।। (मनुः ४/१५७)**

दुराचारी पुरुष सर्वत्र निन्दाको पात्र हुन्छ।

## ३-भेदभावको जनक- येहोवा परमेश्वर

येहोवा परमेश्वरले समस्त मनुष्यहरुलाई समान दृष्टिले पनि देख्दैन। उसको मनमा स्वयं भेदभाव विद्यमान छ। कहिले इस्राएलीहरु प्रति र कहिले मिस्रिहरु प्रति उसको व्यवहार अत्यन्तै क्रुर छ। उसले स्वयं भन्छ-

बाइबलः तर कुनै पनि इस्राएली मानिसमाथि यस्तो घटना हुनेछैन। यहाँसम्म कि तिनीहरूलाई कुकुरले पनि भुक्ने छैन।इस्राएली मानिसहरूमा मात्र होइन तिनीहरूका पशुहरूलाई पनि कुनै नोक्सान हुनेछैन। तिमीले जान्ने छौ यस प्रकारले म इस्राएली मानिसहरू अनि मिश्रीहरूमा भिन्दा भिन्दै प्रकारको व्यवहार गर्नेछु।(प्रस्थानः ११/७)

समिक्षाः जब परमेश्वरले स्वयं नै भेदभाव गर्दछ भने उसका सन्तानले भेदभाव किन नगरुन? निर्दोष पशु-पंक्षीहरुले उसको के बिगारेका थिए होलान र स्थान-स्थानमा तिनीहरु प्रति पनि उसको क्रुर व्यवहार देखिन्छ?

## ४-असहिष्णु येहोवा परमेश्वर

वस्तुतः येहोवा असहनशील छ। बस, उसमा आफ्नै पुजा गराउने धुन सवार छ।उसको राज्यमा अन्य देवी देवताहरुका उपासक रहन सक्दैनन्-

बाइबलः तिनीहरूले अरू देवी देवताहरू पूजेका छन्। अथवा यस्तो पनि हुन सक्छ तिनीहरूले घाम, जून अथवा ताराहरूलाई पूजेका छन् भने यो परमप्रभुको आज्ञाको विरोधमा हुनेछ। यदि यो साँच्चो प्रमाणित हुन्छ भने यस्तो अनिष्ट कार्य गर्ने त्यस पुरूष अथवा स्त्रीलाई शहरको सार्वजनिक ठाउँको फाटकमा तिमीहरूले लानु पर्छ अनि ढुङ्गाले हानेर मार्नु पर्छ। (व्यवस्थाः १७/३-५)

समिक्षाः ईश्वरको यो आज्ञालाई सुनेर या पढेर ईसाईहरुले अन्य देवी देवताहरुका उपासकहरुलाई कसरि सहन गर्लान्? उनीहरुको राज्यमा गैर-ईसाईहरु रहन त अत्यन्त दूभर हुनेछ। त्यसैले जहाँ जहाँ सिधा अंग्रेजी शासन या अंग्रेजका भरौटेहरुको शासन भयो, त्यहाँका मानिसहरुलाई छल, कपट र डर देखाएर तथा शक्तिको दुरुपयोग गरेर जबर्जस्ति ईसाई बनाइयो। उदाहरणको लागि पूरा युरोप पहिले वैदिक धर्मी थियो पछी त्यहाँ ५० वर्षको अवधिमा छल र बलले सतप्रतिशत ईसाईकरण गरियो।

अर्को उदाहरण हेरौं, येहोवा परमेश्वर अन्य देवी देवताहरुका उपासकहरु माथि कसरि क्रोधित हुन्छ-

बाइबलः इस्राएलका मानिसहरूले परमप्रभुसित गरेको करार तिनीहरूले भङ्ग गरे। तिनीहरूले परमप्रभु तिनीहरूका परमेश्वरलाई बिर्से अनि झूटा देवताहरू बाल अनि अशेराको सेवा गरे। परमप्रभु इस्राएलका मानिसहरूसित क्तोधित हुनुभयो। (न्याय कर्ताः ३/७)

येहोवा परमेश्वरले भन्छ-

बाइबलः तब तिमीहरू तिनीहरूलाई भन्नेछौ, 'यही नै त परमप्रभुले भन्नुहुन्छ यस देशमा भएका सबै असहायहरूलाई म जडयाँह जस्तो बनाउने छु। म ती राजाहरूको बारेमा भनिरहेछु जो दाऊदको राजगद्दीमा बस्छन्। म ती पूजाहारीहरू, अगमवक्ताहरू र यरूशलेममा बस्नेहरु सबै मानिसहरूका बारेमा भनिरहेको छु। तिनीहरूलाई एक-अर्कामा चकनाचूर पार्नेछु, बाबु छोराहरूमा पनि आपसमा चक्नाचुर हुनेछन्"' परमप्रभु भन्नुहुन्छ "'तिनीहरूका निम्ति म दुखी हुने छैन अनि म तिनीहरूमाथि क्षमा गर्ने छैन। यहूदाका मानिसहरूलाई ध्वंस पार्न म रोकिने छैन्।" (यर्मियाः१३/१३-१४)

समिक्षाः कति भयङ्कर छ येहोवा परमेश्वरको क्रोध..! शान्तिको त उसमा नामोनिशान नै छैन। धर्मभीरु जनताका लागि यति नै धम्कि काफी छ। शायद यो धम्किले उनीहरु अन्य देवी देवताहरुको उपासना नगरुन। येहोवा परमेश्वरले धमकी दिंदै अगाडी भन्छ-

## ५- प्रतिमा भंजक येहोवा परमेश्वर

बाइबलः ती पर्वतहरूसित यसो भन 'हे इस्राएलको पर्वतहरू! परमप्रभु मेरो मालिकको तर्फबाट यो संदेश सुन। परमप्रभु मेरा मालिक पहाडहरू, पर्वतहरू, बेंसीहरू अनि खोल्चाहरूसँग यसो भन्नुहुन्छ! ध्यान देऊ। म (परमेश्वर) शत्रुलाई तिम्रो विरूद्धमा लडनका निम्ति ल्याउँदैछु। म तिम्रो उच्च स्थानहरू नष्ट गरिदिनेछु। तिम्रो वेदीहरू भत्काएर टुक्रा-टुक्रा पारिदिनेछु। तिम्रो सुगन्धित धूप चढाउने वेदीहरू पनि भत्काइ दिनेछु। अनि म तिम्रो लाशहरू तिम्रो अपवित्र मूर्तिहरूको अघाडी फ्याँकिदिनेछु। म इस्राएलका मानिसहरूको लाशहरू तिनीहरूको

अपवित्र मूर्तिहरूको अघि फ्याँकिदिनेछु। म तिमीहरूको हड्डीहरू तिमीहरूको वेदीहरूको चारैतिर तितर बितर पारिदिनेछु। जहाँ-जहाँ तिमीहरूका मानिसहरू बस्छन् त्यहाँ नराम्रा कुराहरू ल्याई दिनेछु। तिनीहरू शहरहरूमा खाली ढुङ्गाको थुप्रोमा परिणत हुनेछन्। तिनीहरूको उच्च स्थान नष्ट हुनेछ। किनकि ती पूजा स्थानहरूको प्रयोग फेरि हुन नसकोस्। ती सबै वेदीहरू नष्ट गरिनेछ। मानिसहरूले फेरि ती अपवित्र मूर्तिहरू पूज्ने छैनन्। त्यो सुगन्धि धूपको वेदीहरू स-साना टुक्रा पारिनेछ। तिमीहरूले जे बनायौ त्यो पूर्ण रूपमा नष्ट पारिनेछ।
तिम्रा मानिसहरू मर्नेछन् अनि तिमीले थाहा पाउनेछौ कि परमप्रभु म नै हुँ।" (यजकिएलः ६/३-७)

समिक्षाः के पहाड, पर्वत, बेंसी अनि खोल्चाहरूले पनि सुन्छन् र ? के ति प्राणी हुन् र सुन्न सक्ने? सम्भवतः प्रभु येहोवालाई ति निर्जीव हुन् भन्ने कुराको ज्ञान पनि छैन होला। ऊ जुनसुकै शब्दमा जतिसुकै चिच्याए पनि के त्यसको कुनै प्रभाव तिनमा पर्ला र जो उसले तलवार चलाउने धमकी दिदै छ? कहाँ तलवार र कहाँ ति विशाल पहाड? तिनमा तलवार कसरि चलाउने होला? येहोवाले वेदी भत्काउने र प्रतिमा फोड्ने धम्कि दिँदैछ। जब येहोवा परमेश्वरले नै वेदी भत्काउन थाल्यो र प्रतिमा फोड्न थाल्यो भने त यस्तो ईश्वरलाई तपाइँ के भन्नुहोला? स्वयं सोंचौं..! यति हुँदाहुँदै पनि येहोवाले आफ्ना यी धमकी तथा दण्ड बाट पनि मानिसलाई पूर्णरुपेण प्रभावित गर्न सकेन र अनेकौं मानिसहरुले अन्य देवी देवताहरुलाई यसरि मानिरहे-

बाइबलः शद्रक, मेशक अनि अबेदनगोले जवाफमा भने, "महाराज नबूकदनेस्सर, हामीलाई अझै व्याख्या गर्ने आवश्यक्ता छैन; हामी आफ्नो मन परिवर्तन गर्ने छैनौं। यदि, हाम्रो परमेश्वर जसको हामी उपसना गर्छौं उहाँको अस्तित्व छ भने, दन्किरहेको आगोको भट्टीबाट हामीलाई बचाउँने उहाँको सामर्थ छ। यसैले हे राजा उहाँले हामीलाई तपाईंको शक्तिदेखि बचाउँनुहुन्छ। तर राजा तपाईंले यो जान्नु पर्ने छ, हामी तपाईं को देवताहरूलाई पूजा गर्ने छैनौं अथवा सुनको मूर्तिको अघाडी झुकेर दण्डवत पनि गर्ने छैनौं।" (दानियलः ३/१६-१८)

समिक्षाः यसबाट प्रतित हुन्छ कि ईसाईहरुमा पनि मुर्तिपूजा प्रचलित थियो।

## ६- विष्ठाको रोटि

मनुष्यको विष्ठा या गोबर बाट बनेको रोटि कसले खाला? सुँगुरले नै विष्ठा खाँदै घुम्छ र गोबर त कसैले पनि खाँदैन (गोब्रे किराले खान्छ सायद)। तर धन्य हो बाइबल..! जसमा विष्ठाको रोटि बनाउने उपदेश दिइएको छ र त्यो आदेश दिने त्यहि येहोवा नै हो..।

बाइबलः आफ्नो भोजन जौ को रोटि झैं बनाएर खाने गर्नु र त्यो मनुष्यको विष्ठा बाट, त्यसलाई हेर्दै बनाउने गर्नु । ..... मैले तेरा लागि मनुष्य-विष्ठाको साटो गोबर निश्चित गरेकोछु, तैले आफ्नो रोटि यसै बाट बनाउनु। (इजकिएलः ४/१२,१५)

समिक्षाः यदि संसारका सारा ईसाईहरुले यस्तै रोटी खान थाले भने बल्ल अन्य धर्मावलम्बीहरुलाई अन्नको रोटी सरलताले सुलभ हुनेछ र खाद्य समस्याको समाधान सजिलै हुनेछ। सरकारको टाउको दुखाई मेटिनेछ। के ईसाईहरु विष्ठाको रोटि खान तयार छन्? यदि छैनन् भने यो बाइबलको आज्ञाको उल्लङ्घन हुनेछ।

## ७- मदिरा सेवन गराउनुको उद्देश्य

यहाँ हेरौं, मदिरा सेवन गराउनुको उद्देश्य पनि वडो विचित्रको छ-

बाइबलः मदिरा त्यसलाई खुवाउ जो मृत्यु शैयामा छन्, र जो उदास या दुखित छन्, तिनलाई दाखमधु दिनु, जसलाई खाएर उनीहरुले आफ्नो दरिद्रता विर्सने छन्।र आफ्नो कठिन परिश्रम पुनः स्मरण गर्न नसकुन।(हितोपदेशः ३१/ ६-७)

समिक्षाः देख्नुभो त कति विचित्रको सूत्र रैछ मृत्यु शैयाको छट्पटी, दरिद्रता, उदासी र कठिन परिश्रम बाट मुक्त हुने ? कसैले ठिकै भनेको छ-

**पिउनु त छदैछ जसरि पनि तर कुनै न कुनै बहाना चाहियो..!**

जुन व्यक्ति मदिरा सेवी छ, उसलाई ज्ञान र ध्यानको उच्चता प्राप्त हुने त प्रश्न नै उठ्दैन। मदिरा त अज्ञानीहरुले पिउने गर्दछन्, यदि कुनै व्यक्ति व्याकुल छ, पिडित छ, दुःखी छ भने मदिरा सेवन गरेर त्यसलाई क्षणिक बिर्सन्छ र अर्को दिन पुनः दुःखको उही अवस्थामा फर्किन्छ। किनकि मदिराले दुःखलाई नामेट गर्दैन, केवल रनभुल्लमा पारिदिन्छ। ज्ञान र ध्यानले अज्ञानता तथा दुःखलाई मेटाउँछ, रनभुल्लमा पार्दैन। ज्ञान र मदिरा एकार्काका विरोधी हुन्। नत्र यदि मदिरा सेवनले कसैको छटपटी, उदासी र दुःख दूर हुने भए हिन्दी साहित्यकार तुलसीदासले यो भन्ने थिएनन्-

**ग्रहगृहीत पुनि वात-वश,तेहि पुनि बीछी मार।**
**ताहि पियावत वारुणी,कहहु कवन उपचार।।**

(रामचरितमानसः अयो. १७७)

यदि कसैका दिनदशा बिग्रिएका छन्, जो सन्निपात रोगका शिकार छन्, जसलाई बिच्छीले डसेको होस्, तिनीहरुको दुःख दूर गर्नका लागि यदि मदिरा खुवाइदिने हो भने के उनीहरुको सहि या स्थायी उपचार होला?

## ८- शान्तिको दूत ईसा..!

ईसाईहरु ईसालाई पृथ्वीमा शानिस्थापना गर्नका लागि आएको शान्तिको दुत भनेर उसको निक्कै प्रशंसा गर्दछन् र गित गाउने गर्दछन् तर वास्तवमा ईसा यहाँ शान्तिस्थापना गर्नको लागि आएको थिएन; उसले स्वयं भनेको छ- (लूका १२:४९-५३)

“....येशूले भन्यो,“म पृथ्वीमा आगो लगाउन आएको हुँ र अघि नै आगो सल्किसकेको भए त राम्रै हुन्थ्यो! .......के तिमीहरू म पृथ्वीमा मेलमिलाप गराउन आएको हुँ भन्ने सम्झन्छौ? होइन, म त फाटो पो गराउन आएको हुँ। अबदेखि पाँच जनाको परिवारमा फुट हुनेछ। तीन जना दुई जनाको विरोधमा र दुई जना तीन जनाको विरोधमा उठ्नेछन्। बुबाले छोराको र छोराले बुबाको, आमाले छोरीको र छोरीले आमाको, त्यस्तै सासूले बुहारीको अनि बुहारीले सासूको विरोध गर्नेछन्।”

*(नयाँ नियम, मत्ती १०:३४-३७)*

"म पृथ्वीमा मेलमिलाप ल्याउन आएको हुँ भन्ने नसम्झ। म मेलमिलाप ल्याउन होइनँ, तर तरवार चलाउन पो आएको हुँ। म त छोरालाई आफ्नै बुबाको विरोधमा, छोरीलाई आमाको विरोधमा र बुहारीलाई सासूको विरोधमा जुधाउन आएको हुँ। मानिसको ठूलो शत्रुचाहिँ आफ्नो घरकै मानिस हुनेछन्।....."

बाइबलका यी वचनहरु बाट के ईसा शान्तिको दुत भएको सिद्ध हुन्छ र? यो त सबभन्दा ठूलो विघटक हो, पारिवारिक कलहको जन्मदाता हो, समाज र परिवारको विध्वंसक हो..!

तर हामी आर्य-संस्कृतिका उत्तराधिकारी हौं, जसमा सम्पूर्ण विश्वलाई एक परिवार स्वीकार गरिएको छ। हाम्रो विवेकमा समस्त मनुष्य बन्धु हुन भन्ने भावना रहेको छ। त्यसैकारण वेदले भन्छ-

**मा भ्राता भ्रातरं द्विक्षन्मा स्वसारमुत स्वसा ।**
**सम्यञ्चः सव्रता भूत्वा वाचं वदत भद्रया ।।**
{अथर्ववेदः ३/३०/३}
भावार्थ :- दाजुले आफ्नो भाई संग र दिदीले आफ्नी बहिनी संग परस्पर द्वेष नगर। तिमीहरु आपसमा कुनै कटुता नराखी समान विचारले प्रेमभाव राख्दै परस्पर मधुर वचन बोल्ने गर।

**अनुव्रतः पितुः पुत्रो मात्रा भवतु सम्मनाः।**
**जाया पत्ये मधुमतीं वाचं वदतु शंतिवाम्।**
(अथर्वः ३/३१/२)
भावार्थः पुत्रले सदा माता-पिताको आज्ञा पालन गर्नु, उनका साथ एक मन भएर रहनु, पत्नीले आफ्ना पतिका साथ सदा मधुर तथा स्नेहयुक्त वाणीको व्यवहार गर्नु, त्यसैगरी पतिले पनि आफ्नी पत्नीका साथ मधुर तथा स्नेह युक्त व्यवहार गर्नु।
देख्नुभो हैन? कहाँ बाइबलको विघटनको उपदेश र कहाँ वेदको सर्वोच्च, सर्वश्रेष्ठ पारिवारिक एकता, सौहार्द तथा साहचर्यको संदेश..! यो हो वैदिक संस्कृतिको महानता..!

## ९- स्वर्गको बाटो

ईसाईहरुको स्वर्ग प्राप्तिको मार्ग हेर्नुस्, बाइबलले भन्छ- कुनै धनवान व्यक्ति स्वर्ग जाने छैन, अतः संसारमा जति पनि धनि ईसाई देश या धनवान व्यक्ति छन्, तिनले सोंच्नु पर्ने भयो कि ति स्वर्ग जाने हुन् या नरक?

बाइबलः त्यसपछि येशूले आफ्ना चेलाहरूलाई भन्नुभयो, "म तिमीहरूलाई साँचो भन्दछु। एउटा धनी मानिसलाई स्वर्गको राज्यमा पस्न खुबै कठिन हुन्छ। धनी मानिसलाई परमेश्वरको राज्यमा पस्नु भन्दा बरू ऊँटलाई सियोको नाथ्रीबाट छिर्न सजिलो पर्नेछ।" (मत्तीः १९/२३-२४)

समिक्षाः स्वर्गमा जाने मापदण्ड केहो भन्ने कुरा ईसाले स्पष्ट गरेन। के सबै निर्धन जति स्वर्ग जाने हुन्? ईश्वरले सबैलाई आ-आफ्नो कर्मानुसार स्वर्ग-नरक दिनु पर्ने थियो। तर उसले स्वर्ग प्राप्तिको मापदण्ड पनि आर्थिक आधारमा राख्यो। यो कुरो विचारणीय छ। के सत्यनिष्ठ, इमान्दार, परोपकारी, ईश्वरभक्त, कर्तव्यनिष्ठ धनवान व्यक्तिहरु पनि स्वर्ग जान नपाउने भए त? यो त उनीहरु प्रति सरासर अन्याय हुनेछ।

## १०- नारीको अपमान

बाइबलले नारीलाई पुरुषको तुलनामा हीन तथा तुच्छ सम्झन्छ। नारी र पुरुषमा समानताको अधिकार प्रदान गर्दैन। अतः नारीलाई पुरुषको अधीनतामा रहने उपदेश दिन्छ-

बाइबलः तर म कुनै स्त्रीलाई शिक्षा दिने तथा कुनै पुरुषमाथि अधिकार जमाउने अनुमति दिंदिन, तर स्त्री चुपचाप बस्नुपर्छ। (१ तिमोथीः २/१२)

समिक्षाः कहाँ गयो ईसाईहरुको समानताको अधिकार? ईसाईले त आँफूलाई संसारकै सभ्य र सुसंस्कृत सम्झन्छन् तर बाइबल अध्ययन गर्दा भने यस्तो लाग्दैन। यसबाट यो पनि सिद्ध हुन्छ कि ईसाईहरु बाइबलको आज्ञा मान्दैनन्। किनकि अनेकौं स्त्रीहरु "नन" को रुपमा कार्य गरिरहेका छन्। मदर टेरेसा पनि उपदेशिका थिई। त्यसको मृत्यु पछी त्यसको स्थान ग्रहण गर्ने पनि स्त्री नै हो। अनेकौं स्त्रीहरु विद्यालय, महाविद्यालय, शिक्षण अस्पताल आदि संस्थाहरुको माध्ययम बाट कार्य गरिरहेका छन्। यिनीहरुलाई पनि त बाइबलको आज्ञा उल्लङ्घन गरेकोमा दण्डित गर्नु पर्ने थियो। बेलायतकी महारानी एलिजावेथलाई राजगद्दीमा कसरि विराजमान गराइयो? चुपचाप घरमै बस्नु पर्ने।

जहाँ बाइबलले स्त्रीलाई घरभित्र बन्द गरेर राख्न चाहन्छ भने वेदले शिक्षाको समान अधिकार दिन्छ। महर्षि दयानन्द सरस्वतिले आफ्नो कालजयी ग्रन्थ सत्यार्थ प्रकाशको दोस्रो समुल्लासमा भनेका छन्- "ति माता-पिता आफ्ना सन्तानका पूर्ण शत्रू हुन जसले तिनलाई विद्या प्राप्त गर्ने अवसर नै दिएनन्।" आठ वर्ष पूरा भए पछी केटालाई केटाको र केटीलाई केटीको पाठशालामा भर्ना गरिदिनु।"

"यसमा राजनियम र जातिनियम यस्तो हुनु पर्दछ जसमा पाँच र आठ वर्ष पछी आ-आफ्ना छोरा-छोरीहरुलाई कसैले पनि घरमा नराखेर पाठशालामा अवश्य पठाउनु पर्दछ। जसले पठाउँदैन; त्यो दण्डनीय होस्। (स.प्र. समू.३)

वेदले भन्छ-

**स्त्री हि ब्रह्मा बभूविथ।।** (ऋ. ८/३३/१९)

निश्चय नै स्त्री वेदवेत्ता, यज्ञकी ब्रह्मा तथा पूज्या हुन सक्छीन्।

## ११- पवित्र हुने विचित्रको विधि

बाइबलमा अपवित्र या अशुद्ध मानिसलाई पवित्र या शुद्ध गराउने वडो विचित्रको अथवा भनौं विभत्स सैतानी विधि पनि हेरौं न-

अशुद्ध मानिसहरूलाई बाख्रा र बहरको रगत अनि कोरली(बाच्छी)को खरानी छर्केर शुद्ध पारिन्थ्यो। (हिब्रूः ९/१३)

अर्को पनि हेरौं- त्यस भेडालाई मार र त्यसको केही रगत ल्याऊ। हारून र तिनका छोराहरूको दाहिने कानको लोतीमा त्यो रगत लगाइदेऊ। अनि केही रगत तिनीहरूको दाहिने हातको बूढी औंलाहरूमा लगाइदेऊ। र दाहिने खुट्टाको बूढी औंलामाथि केही रगत राख। त्यसपछि रगतलाई वेदीको वरिपरि छर्क। त्यसपछि वेदीबाट केही रगत झिकेर अभिषेक गर्ने तेलसित मिलाऊ र हारून र तिनका छोराहरूमाथि

छर्किदेऊ। तिनीहरूका पोशाकहरूमाथि पनि छर्किदेऊ। यसले हारून र तिनका छोराहरूले मेरो विशेष रूपले सेवा गर्नेछन् भन्ने बुझाउँछ। अनि यसले तिनीहरूको लुगाहरू पनि विशेष समयमा मात्र प्रयोग गरिन्छ भनी दर्शाउँछ।(प्रस्थानः २९/२०-२१)

समिक्षाः छैन त विचित्रको विधि..! टुना-मुना र अन्धविश्वासले भरिएको, सैतानी भनौं या जङ्गली विभत्स प्रकारको विधि..! आज सम्म सायद कसैले पवित्र हुनको लागि यस्तो विधि अपनाएको छैन होला।

सोंचौं त, जब शरीरमा निर्दोष पशुको रगत छर्किइन्छ भने पवित्र कसरि भइन्छ होला? उसको शरीर बाट दुर्गन्ध आउला, झिंगा भन्केलान, झिँगाले औंसा पारे भने किरा पनि पार्लान्। वस्तुतः शरीरको शुद्धि त सफा पानीले स्नान गर्दा पो हुन्छ।

महर्षि मनुले भनेका छन्-

**अद्भिर्गात्राणि शुध्यन्ति मनः सत्येन शुध्यति।**

**विद्यातपोभ्यां भूतात्मा बुद्धिर्ज्ञानेन शुध्यति।।** (मनुः ५/१०९)

भावार्थः जलले शरीरका बाहिरि अङ्ग शुद्ध हुन्छन्, सत्याचरणले मन शुद्ध हुन्छ, विद्या र तपले आत्मा शुद्ध हुन्छ र ज्ञानले बुद्धि शुद्ध हुन्छ। पवित्रताको यो कति सुन्दर तथा वैज्ञानिक विधि छ।

## १२- अहिंसा र प्रेमको पूजारी ईसा..!

एकातिर त ईसालाई अहिंसा र प्रेमको पूजारी भनिन्छ भने अर्को तिर निर्दोष तथा मूक पशु-पंक्षीहरुलाई क्रुरता पूर्वक हत्या गरेर दिइने बलिप्रथालाई बाइबलमा समर्थन गरिएको छ। अहिंसा तथा प्रेमको पूजारी ईसाले बाइबलको यस्तो सैतानी कृत्यलाई कसरि स्वीकार गर्यो? उसले यस्तो जघन्य अपराधको विरोध या खण्डन गर्नु पर्ने थियो। यहाँ हेर्नुहोस्, उसको परमेश्वर येहोवाले स्वयं होमबलिलाई कसरि स्वीकार गरेको छ-

## १३- पशुबली

बाइबलकानुसार आदमको जेठो छोरो काबिल खेती गर्न लाग्यो र कान्छो छोराले भेडा-बाखा पाल्ने काम गर्न थाल्यो । केहि समय पश्चात् जब काबिलले आफ्नो उपज बाट केहि भेटि स्वरूप येहोवालाई चढाउनको लागि लिएर गयो तर येहोवाले उसको भेटि अस्वीकार गर्दियो । अर्को तिर जब हाबिलले येहोवालाई भेटि स्वरूप आफ्नो भेडाको बगाल बाट एउटा गतिलो पहिलौठो भेडो मारेर चढायो र येहोवाले निक्कै खुशी हुँदै उक्त भेटि स्वीकार गर्यो" ।।
(बाइबल -उत्पत्ति ४:१-६)

यसबाट ज्ञात हुन्छ कि ईसाईहरुको परमेश्वर- येहोवा स्वभावले नै पक्षपाती, हिंस्रक तथा मांसप्रेमी छ । त्यतिबेला येहोवाको कुनै घर थिएन त्यसैकारण उसले यो सजिलो तरिका अपनायो होला..!

त्यसपछि नूहले परम्मप्रभुको निम्ति एउटा वेदी उभ्याए र उनले केही पवित्र पशुहरु र पवित्र चराहरु परमप्रभुको निम्ति वेदीमा होमबलि चढाए। परमप्रभुले त्यस बलिदानहरुको बास्ना लिएपछि सन्तोष हुनुभयो... ।(उत्पत्तिः ८/२०-२१)

- **स्थायी वधस्थानः-**

केहि समय पश्चात् येहोवाले एक स्थानमा स्थायी वधस्थल (slaughter place) बनाइदियो जसलाई Altar (Hebrew: מִזְבֵּחַ, Mizbeach) भनिन्छ । त्यही स्थानमा त्यो राक्षस-येहोवाले ति निर्दोष तथा मूक पशुहरुको बलि स्वीकार गर्ने गर्दथ्यो ताकि यता-उता डुल्न नपरोस् । येहोवाले भन्यो- "तैंले मेरो लागि माटाको एक वेदी बनाउनु र त्यसैमा आफ्ना भेडा-बाख्राहरु र आफ्ना गाई-गोरुहरुको होम बलि चढाउने गर्नु र म त्यहीं रहेर तलाई आशीष दिनेछु । यदि तैले पत्थरको वेदी बनाइस भने राम्रोसंग ताछेका पत्थरहरुको नबनाउनु" ।
(बाइबल-व्यवस्था-२०: २४-२५)

- **येहोवाको मांसाहारी मनः-**

जब एक पटक येहोवाको जिब्रोमा मासुको स्वाद लाग्यो, तब साना-ठूला सबै शाकाहारी जानवरहरुको बलि लिन थाल्यो र उनको आयु, रङ र मार्ने तरिका पनि मानिसलाई सिकाउन थाल्यो, जो बाइबलमा उल्लेख गरिएको छ ।

- येहोवाले भन्यो- "चाहे मनुष्यको होस् या पशुको होस् जो पनि आफ्नो आमाको जेठो सन्तान होस् तैले मेरो लागि अर्पण गर्" (बाइबल -प्रस्थान-१३:२ )
- "जसले मेरो आदेशको उन्लंघन गर्छ र कुनै पाप गर्छ, त्यसले आफ्नो बगाल बाट सबभन्दा बढी मूल्यको मोटो भेडो दण्ड स्वरूप ल्याओस् " (बाइबिल-लेवी-५;१५)

बाइबलमा उल्लेख भएको छ कि रगत येहोवाको सबभन्दा अधिक मनपर्ने वस्तु हो । बाइबलको कथन हेर्नुस् —

- "किनकि हरेक देहधारीको प्राण उसको रगतमा रहन्छ, र त्यसैले मैले सबैलाई वेदीमा रगत चढाउने भनेको हुँ। यसैकारण कुनै पनि व्यक्तिले रगत नखानु।"

(बाईबल-लेवी- १७:११-१३)

- "यदि पूजारीले पाप गर्छ र अरुलाई दोष लाउँछ भने त्यसले आँफूले गरेको पाप का निम्ति मेलमिलाप स्वरूप प्रभू कहाँ एउटा जवान साँढे ल्याओस्" (बाइबल लेवी -४: ३)
- "त्यस साँढे लाई प्रवेश द्वार मा प्रभूको सामुन्ने प्रस्तुत गरोस् र साँढेको शिरमा हात राखोस र त्यसलाई मारोस्" (बाइबल लेवी -४:४ )
- "त्यसपछि त्यो पापी पूजारीले साँढेको रगत लिएर भित्र प्रभूसंग जाओस्" (बाइबल लेवी -४:५)
- "त्यसले आफ्नो औंला रगतमा चोपेर प्रभूको अघिल्तिर सातपल्ट छार्कोस्" (बाइबल लेवी -४:६)
- "त्यो साँढेको सबै बोसो, मुटु, कलेजो, मृगौला आदि निकालोस् त्यो सब प्रभूकै लागि हो..अनि त्यस साँढेको छाला, सिङ, खुट्टा, गोबर लगायत सबै उब्रेका चिजहरु दाउराको आगोमा जलाओस्" (बाइबल लेवी -४:८-१२)
- "पूजारीले पशुको रगत वेदीको फेदीमा खन्याओस्" (बाइबल लेवी -४:३०)
- "पूजारीले त्यस पशुको सबै बोसो झिकोस् र परम प्रभूलाई मनपर्दो बास्नाको रुपमा बेदीमा जलाओस्" (बाइबल लेवी -४:३१)

- "किनकि बलिको रगत येहोवाको भोजन हो त्यसैले तिमीहरु रगत नखानु" (बाइबल लेवी -३:१६-१७)
- "तिमीहरु मासुलाई प्राणका साथ यानि रगतका साथ नखानु" (बाइबल उत्पति-९:४-५)

बाइबलका यी वचनहरुबाट यो साबित हुन्छ कि बगालका मोटा-घाटा तथा पहिलो पशुको रगत र बोसो येहोवाको भोजन हो, त्यसैले उसले अरुलाई रगत र बोसो निषेध गर्दिएको होला।

- **येहोवा मासु खाएर मिच्छयोः -**

जब निक्कै बर्ष सम्म येहोवाले जनावरहरुको काँचो मासु खायो र रगत पियो तब ऊ अघायो र उसलाई यी सब चिज देखि अरुचि हुन थाल्यो, जुन कुरो बाइबल कै शब्दमा यस्तो वर्णन छ :-

- येहोवाले भन्यो- " अब जनावरहरुको बलि मेरो लागि कुनै कामको छैन, म भेडा-बाखा-बाच्छा-साँढे तथा अन्य पशुको रगतले अघाएको छु, अब म यिनको रगतले प्रसन्न हुन्न" (बाइबल —यशैया-१:११-१२)

तब नुनले मासुमा स्वाद आउला भनेर येहोवाले सोंच्यो र उसले भन्यो-

"तिमीहरुको सबै दान र बलिहरुमा नुन मिलाउनु, बलिलाई नुन बिना न राख्नु" (बाइबल लेवी २:१३)

समिक्षाः अलिकति मानव बनेर सोंच्ने गरौं त मासु, हड्डी, बोसो आदि जलाउँदा सुगन्ध उत्पन्न हुन्छ कि दुर्गन्ध? येहोवा यो वास्तविकतालाई सम्झनमा पनि असमर्थ रहेको देखिन्छ। साथै जहाँ परमेश्वर निर्दोष पशु-पंक्षीको बलिले प्रसन्न हुन्छ, त्यहाँ नरबलिका लागि पनि प्रेरित गर्दछ-

## १४- नरबलि

अब येहोवा जनावरहरुको बलिले मात्र संतोष न रहने भयो, निर्लज्ज पिशाच अब मनुष्यभक्षी बन्न लाग्यो उसले निर्दोष मानव पुत्र र पुत्री को समेत बलि लिन थाल्यो । बाइबलमा यस्तो समेत पढ्न पाइन्छ, जसले जस्तोसुकै कठोर हृदय पनि द्रवित हुन्छ —

- येहोवाले इब्राहिमलाई भन्यो —" तँ मैले भनेको स्थान मोरिया जा, र आफ्नो प्राण प्यारो छोरो इसहाकलाई मेरो लागि होम बलि चढा ।(बाइबल-उत्पत्ति-२२:१-१८)
- "यिप्ताहको कुनै पुत्र थिएन, उसले भाकल गरेको थियो कि यदि ऊ युद्धबाट सकुशल फर्केर आयो भने आफ्नै संतानको बलि चढाउने छ, उसकी एक मात्र पुत्री मिज्पाह थी । उसले त्यसैलाई बलि चढायो । (बाइबल-न्यायकर्ता- ११:२९-४०)

  समिक्षाः बाइबलमा ईसा र उसको परमेश्वर येहोवाको प्राणी प्रति दयाभावको नामोनिशान कहीं पनि दृष्टिगोचर हुँदैन ।

  वैदिक धर्मको सिद्धान्त यसको विपरित छ। "होम" अर्थात् "यज्ञ" लाई "अध्वर" पनि भनिन्छ-

  **अध्वरो वै यज्ञः ।।** (शतपथब्राह्मणः ३/६/३/१०)

  हिंसा रहित कर्म नै यज्ञ हो।

**अध्वरः ध्वरति हिंसाकर्मा तत्प्रतिषेधः।।**

"ध्वर" को अर्थ हो- हिंसाकर्म; जुन यज्ञमा हिंसा हुँदैन, त्यो अध्वर हो। यो हो वैदिक धर्मको विशेषता। जहाँ हिंसाको निषेध छ।

**आरे ते गोघ्नमुत पूश्घ्नं क्षयद्-वीर। ।**

हे शत्रु विनाशक वीर.! गो हत्यारा दुष्टहरुलाई हामी देखि टाढै राख।

## १५- पाप कर्म बाट मुक्ति?

यदि तपाईँले कुनै पाप गर्नुभएको छ भने प्रायश्चितका लागि कुनै पशु-पंक्षीलाई क्रुरता पूर्वक काटेर बलि दिनुहोस् र पाप बाट छुटकारा पाउनुहोस्। कति राम्रो उपाय छ हैन?!! गरोस् कसैले, भरोस् कसैले..! पाप गर्ने मान्छे, जीवन गुमाउनु पर्ने निर्दोष पशु-पंक्षीले? त्यसैले त होला यो भनाइ चलेको-

**"ज्यान जाओस् कमिलाको, खानेलाई स्वाद नाईँ.."**

बाइबलको विचित्र तथा विभत्स लिला हेरौंः यी सात दिनसम्म प्रत्येक दिन तिमीहरूले एउटा बाछा बलि चढाउनु पर्छ। यो हारून र उसको छोराहरूको प्रायश्चितका निम्ति हुनेछ। तिमीहरूले एउटा बाछा पनि वेदीको शुद्धताको निम्ति चढाउनु पर्छ। तिमीहरूले शुद्ध भद्राक्षको तेल वेदीमाथि खन्याएर यसलाई पवित्र बनाउनु पर्छ। सात दिनसम्म तिमीहरूले वेदीको लागि प्रायश्चित गर्नेछौ अनि पवित्र पार्नेछौ। त्यस समय वेदी अत्यन्तै पवित्र हुनेछ। कुनै चीजहरूले वेदीलाई छुनेहो भने त्यो पनि पवित्र हुनुपर्छ।"प्रत्येक दिन तिमीले वेदीमा उपहार चढाउनु नै पर्छ। तिमीले दुइवटा एक वर्षे भेडाको बच्चो (थुमा) बलि चढाउनु पर्छ। तिमीहरूले पहिलो थुमा बिहान अनि दोस्रो थुमा घाम अस्ताउँदा (गोधुली पख) बलि दिनु पर्छ। जब तिमीले पहिलो थुमा बलि दिनेछौ त्यस समय एक दशांश एपाको राम्रो गहूँको पिठोसित भद्राक्षको एक पावा टीन कुटेको तेल अनि एक पावा टीन दाखरसको अर्घबलि बलिमिसाऊ चढाऊ। जब तिमीहरूले साँझमा दोस्रो बलि चढाउँछौ पहिलो थुमालाई बिहान गरे झैं गर बलिको सुगन्धले परमप्रभुलाई खुशी पार्छ। (प्रस्थानः २९/३६-४०)

### वैदिक धर्मानुसार शुभाशुभ कर्मको फल अवश्य भोग्नै पर्दछ-

कर्म पूरा भएपछी, कर्म अनुरूप, शुभ या अशुभ कर्मका कर्त्तालाई न्यायपूर्वक, न कम न अधिक, ईश्वर, राजा, गुरू, माता-पिता, स्वामी आदि द्वारा सुख-दुःख, या सुख-दुःख प्राप्त गर्ने साधन प्रदान गर्नुलाई कर्मको फल भनिन्छ। उदाहरणको रुपमा- कुनै व्यापारीले आफ्ना वस्तुहरुमा मिलावट गरेर बेच्छ या ठगि गर्छ र समातियो भने राजा (शासक) द्वारा कठोर कारावासको दण्ड तथा आर्थिक दण्ड गरिन्छ। यो कर्मको फल हो।

कर्मको फल त अवश्य प्राप्त हुन्छ, बिना फल ति कर्म कदापि नष्ट हुँदैनन् किनकिः-

**अवश्यमेव भोक्तव्यं कृतं कर्म शुभाशुभम् । (महाभारत)**
**नाभुक्तं क्षीयते कर्म कल्पकोटिशतैरपि । (अत्री स्मृति)**
**यथा धेनुसहस्त्रेषु वत्सो गच्छति मातरम्।**
**तथा यच्च कृतं कर्म कर्तारमनुगच्छति । (चाणक्य नीति १३/१४)**

हजारौं गाईहरुका बीचमा पनि बाच्छो जसरि केवल आफ्नै आमाको नजिक आउँछ, त्यस्तै गरिएका कर्म हजारौं मनुष्यहरु मध्ये केवल कर्ता कै पछी आउँछन्।

रोग निको पार्ने पनि वडो विचित्रको विधि दिइएको छ-

## १६- कुष्ठ रोग (कोढ)को विचित्र उपचार

**बाइबलः लेबीः** अध्याय १४/२-५१

........कोढ लागेको मानिसलाई शुद्ध गराउनुको निम्ति पुजारीले दुइवटा शुद्ध चरा, एक टुक्रा सल्लाको काठ, अलिकति रातो धागो र हिसप ल्याउने आदेश दिऊन्।

त्यसपछि पूजाहारीले ती दुइवटा मध्ये एउटा चरालाई माटोको भाँडामा भएको ताजा पानीमाथि मार्ने आज्ञा दिऊन्। अर्को जिउँदो चरालाई पूजाहारीले लिएर, सल्लाको काठ, रातो धागो अनि हिसपसित अघिल्लो चराको रगत मिसिएको पानीमा चोबलून्। अनि चर्म रोग निको पारिनु पर्ने मानिसमाथि त्यो पानी सात पल्ट छर्किउन्।

त्यसपछि त्यो मानिस शुद्ध भयो भनी घोषणा गरियोस्। अनि त्यो जीवित चरालाई पूजाहारीले खुल्ला मैदानमा छाडिदिऊन्। "तब मानिसले जसलाई शुद्धगराइदै थियो, आफ्नो लुगाहरू धुनु पर्छ कपाल खौरिनु अनि नुहाउनु पर्छ अनि त्यो मानिस शुद्ध हुन्छ। तब मानिस आफ्नो पालभित्र पस्न सक्छ तर सात दिनसम्म पालभित्र पस्नु हुँदैन।

सातौं दिन उसले आफ्नो कपाल, दाह्री अनी आँखी रौं खौरोस् उसले सबै कपाल खौरोस्, आफ्नो लुगा धुओस् अनि ऊ शुद्ध हुन्छ।

"आठौं दिनको दिन त्यो चर्मरोग लागेको मानिसले भेडाको दुइवटा निष्खोट पाठो अनि एक वर्षको पाठी जसको कुनै खोट छैन र अन्नबलिको निम्ति तेलमा मुछेको डेढ पाथी मसिनो पिठो र आधा माना तेल ल्याओस्। शुद्ध पार्ने पूजाहारीले भेट हुने पालको फाटकमा परमप्रभुअघि चर्म रोग भएको मानिस र उसको भेटीहरू ल्याउनु पर्छ। तब पूजाहारीले एउटा पाठो अनि आधा माना तेल ल्याउनु पर्छ अनि परमप्रभुको निम्ति दोषबलिलाई डोलाउने बलिको रूप चढाउनु पर्छ। उनले पापबलि र होमबलि चढाउने पवित्र स्थानमा मार्नु पर्छ किनभने यो दोषबलि पापबलि जस्तै हो। यो पूजाहारीको हो अत्यन्तै पवित्र हुन्छ।

"पूजाहारीले दोषबलिबाट केही रगत लिनु पर्छ र शुद्ध हुने मानिसको दाहिने कानको लोतीमा, दाहिने हातको र दाहिने खुट्टाको बूढी-औंलाहरूमा यसलाई दल्नु पर्छ। त्यसपछि पूजाहारीले आधा माना तेल लिएर आफ्नो देब्रेहातको हत्केलामा हालून्। त्यसपछि पूजाहारीले आफ्नो देब्रे हातको हत्केलामा दाहिने हातको औंला डुबाएर परमप्रभुअघि सात पल्ट छर्किऊन्। हत्केलामा बाँकी रहेको तेल शुद्ध हुने मानिसको दाहिने कान, उसको दाहिने हातको बूढी औंलामाथि, दाहिने खुट्टाको बूढी औंलामाथि खनाउनु पर्छ जुन ठाउँमा उसले दोषबलिको रगत छर्केको थियो। उसको हत्केलामा रहेको तेल त्यो शुद्ध पारिदै गरिएको मानिसको टाउकोमा लगाउनु पर्छ त्यस्तै प्रकारले पूजाहारीले उसलाई परमप्रभुअघि शुद्ध पार्नु पर्छ।

"तब पूजाहारीले पापबलि चढाउनु पर्छ अनि मानिसलाई उसको अशुद्धताबाट शुद्ध गर्नु पर्छ अनि त्यसपछि उनले होमबलि मार्नु पर्छ। पूजाहारीले होमबलि अनि अन्नबलि वेदीमा चढाएर त्यस मानिसलाई प्रायश्चित गर्नु पर्छ अनि त्यो मानिस शुद्ध हुनेछ।

"तर यदि ऊ गरीब छ अनि त्यसको व्यवस्थामा गर्नु सक्दैन भने तब उसले शुद्ध हुनका लागि एउटा भेडा दोष बलिको रूपमा ल्याउनु पर्छ अनि एपाको दश खण्डको एक खण्ड तेल मिसाइएको मिहिन पीठो अनि एक माना जैतुनको तेल अन्न बलिको रूपमा ल्याउनु पर्छ। अनि आफूले व्यवस्था गर्न सके अनुसार दुइवटा ढुकुर अथवा परेवाको बच्चा, एउटा पापबलिको निम्ति र अर्को होमबलिको निम्ति ल्याओस्। "उसको शुद्धताको निम्ति आठौं

दिनमा ती सब भेट हुने पालको ढोकामा परमप्रभुको सामुन्ने पूजाहारीकहाँ ल्याओस्। तब पूजाहारीले दोषबलिको पाठो र तेल लिएर डोलाउने बलिको रूपमा परमप्रभुअघि हल्लाउनु पर्छ।

त्यसपछि दोषबलिको निम्ति भेडाको पाठो मारियोस् र त्यसको केही रगत शुद्ध पारिनु पर्ने मानिसको दाहिने कानको लोतीमा, दाहिने हातको र दाहिने खुट्टाको बूढी-औंलाहरूमा लगाऊन्। अनि पूजाहारीले तेल त्यही देब्रे हातको हत्केलामा खन्याउनु पर्छ। त्यसपछि पूजाहारीले हत्केलाको तेल दाहिने हातको ओंलाले परमप्रभु अघि सात पल्ट छर्किऊन्। अनि पूजाहारीले उसको हातमा रहेको केही तेलबाट लिएर त्यो शुद्ध पारिनु पर्ने मानिसको दाहिने कानको लोतीमा, दाहिने हातको बूढी-औंला र दाहिने खुट्टाको बूढीऔंलामा जहाँ दोषबलिको रगत लगाइ दिएको थियो त्यही लगाई दिऊन्। पूजाहारीको हत्केलामा बाँकी रहेको तेल शुद्ध पारिनु पर्ने मानिसको शिरमा परमप्रभुअघि उसलाई शुद्ध पार्न लगाई दिऊन्। "तब जवान ढुकुर अथवा परेवा जे हुन्छ उसले जगेडा गर्न सक्छ। एउटा पापबलिको निम्ति अनि अर्को होमबलिको निम्ति पूजाहारीले अन्नबलिसित चढाऊन्।

यसरी पूजाहारीले त्यो शुद्ध पारिनु पर्ने मानिसलाई परमप्रभुकोअघि प्रायश्चित गराउने छन्।" एक जना मानिसहरू चर्म रोगबाट मुक्त भएपछि शुद्ध हुनको निम्ति यी नियमहरू छन्।

यी नियमहरू तिनीहरूका लागि हुन जो आफूलाई शुद्ध बनाउनका लागि नियमित बलि चढाउन जगेडा गर्न सक्दैनन्। परमप्रभुले मोशा र हारूनलाई भन्नुभयो, "जब मैले तिमीहरूको अधिकारमा दिन लागेको कनान देशमा तिमीहरू पुग्छौ, अनि म तिमीहरूको कुनै घरमा ढुसी पठाउनेछु, तब त्यो घरको मालिक आओस् र पूजाहारीलाई भनोस्, 'मेरो घरमा ढुसी परे जस्तै लाग्छ।' "त्यसपछि पूजाहारीले घरमा आफू घर जाँच गर्नुअघि त्यस घरको प्रत्येक चीज बाहिर निकाल्ने आदेश दिऊन् कारण घरको प्रत्येक चीज नै अशुद्ध हुँदैन।

त्यसपछि पूजाहारी घर जाँच गर्न आऊन् र यदि उनले घरको भित्तामा लागेको ढुसीमा रातो अथवा हरियो टाटो पाए त्यो भित्तामा ढुसीमा गहिरिएको बुझिनेछ र, तब पूजाहारीले बाहिर निस्केर सात दिन सम्मको निम्ति घरको ढोका बन्द गरिदिऊन्। "पूजाहारीले सात दिनमा फर्केर घर निरीक्षण गर्नु पर्छ। यदि घरको भित्तामा ढुसी फैलिएको पाइन्छ पूजाहारीले आदेश दिनुपर्छ, मानिसहरूले त्यस घरको भित्ताको ढुसी लागेको ठाउँको ढुङ्गाहरू भत्काउन र ती ढुङ्गाहरू शहर बाहिर लगी कुनै फोहोर ठाउँमा फ्याँकून्।

त्यसपछि पूजाहारीले त्यस घरको भित्ता सबै खुर्किन लगाऊन् र मानिसहरूले खुर्केर निस्केको वस्तु सबै शहरबाहिर कही मैला ठाउँमा फ्याँक्न लगाऊन् र त्यस भित्तामा नयाँ लेप लगाउन आज्ञा दिउन्। तिनीहरूले फूटेका ढुङ्गाहरूलाई नयाँ ढुङ्गसित फेर्नु पर्छ। घरको मालिकले नयाँ लेप लगाउनु पर्छ। "एकपल्ट घरको भित्ताका ढुङ्गाहरू फ्याँकेर खुर्केर लिउन लगाउँदा पनि यदि त्यस घरको भित्तामा फेरि ढुसी निस्कन्छ भने त्यहाँ जाँच गर्न पूजाहारी आऊन् र यदि ढुसी त्यहाँ फैलेर घरको माल-तालहरू नष्ट पार्दैछ भने त्यो घर अशुद्ध हो।

त्यस घरको ढुङ्गहरू, काठपातहरू निकालेर शहर बाहिर कुनै मैला ठाउँमा फ्याँक्नुपर्छ। यदि कुनै मानिस त्यस्तो निषेधित घरमा पसे त्यो साँझसम्म अशुद्ध हुनेछ। यदि कुनै मानिस त्यस घरमा सुते उसले आफ्नो लुगा धुनुपर्छ। यदि कसैले त्यस घरभित्र खाए पनि उसले आफ्नो लुगा धुनुपर्छ। "पूजाहारी आएर परीक्षण गर्दा त्यस घरमा लिउन लगाई सक्दा ढुसी नफैलिएको पाए, ढुसी हराइसकेको हुँदा पूजाहारीले त्यो घर शुद्ध भएको घोषणा गरून्। किन? किनभने ढुस्सी हटेको छ। "अनि घर शुद्ध पार्न पूजाहारीले दुईवटा चराहरू, धूपीको काठ, हिसोफ र रातो धागो लानु पर्छ। ती दुई चराहरू मध्ये एउटालाई माटोको भाँडामा भएको पानीमाथि उसले मारोस्। अनि धूपीको काठ, हिसोफ, रातो धागो र जिउँदो चरा लिएर बग्दै गरेको पानीमाथि मारेको चराको रगतमा चोबेर उसले सात पल्ट घरमा रगत छर्किनु पर्छ।

यो विचित्रको नियमले कसैको कोढ कति सुद्ध या निको भयो भन्ने कुरो त त्यहि सुद्धकर्ताले जानेको होला या त्यो कोढीले मात्र जसको कोढ निको भएको होस्।

समिक्षाः कोढ निको पार्ने यस्तो प्रभावशाली (!) विधिको सम्मुख देशभरिका सम्पूर्ण कुष्ठरोग निवारण संघ र त्यसका समस्त कार्यक्रमहरु तुरुन्त बन्द गरेर यहि विधि लागु गर्नु नै उत्तम होला, त्यत्रो भारि खर्च गर्नु केको आवश्यकता? कुष्ठरोगको उपचार त बाइबलले दिईहाल्यो, जहाँ-जहाँ कुष्ठ आश्रम छन्, त्यहाँका रोगिहरुलाई किन यसको जानकारी दिईएन? उनीहरुको पनि उद्धार गरिदिनु पर्ने..! आजको वैज्ञानिक युगमा पनि थाहा छैन कसरि मान्छेले यस्तो मूर्खता पूर्ण कुराको विश्वास गर्दछन्? किन लाटा-सोझालाई धोका दिइरहेका छन्? यसैले त होला नि सबै ईसाई बनुन, चाहे रोग ठिक होस् या नहोस्..!

त्यति मात्र हैन. प्रमेह रोगीको रोग निको भएपछी पनि बलिको आवश्यक छ-

बाइबलः आठौं दिन दुइवटा परेवा अथवा ढुकुर लिएर ऊ परमप्रभुअघि आउनु पर्छ अनि ती सबै पूजाहारीलाई भेट हुने पालको प्रवेशद्वारमा दिनु पर्छ। पूजाहारीले दुइवटा चराहरू चढाउनु पर्छ। एउटा पाप बलिको निम्ति अनि अर्को होमबलिको निम्ति चढाउनु पर्नेछ। यस तरीकामा, पूजाहारीले प्रमेह हुने मानिसलाई परमप्रभुअघि शुद्ध बनाउने छन्। (लेबीः १५/१४-१५)

समिक्षाः रोग प्रमेहको, बलि भने निर्दोष पंक्षीहरुको..! कति सुन्दर समाधान हो, हैन? यस्तो तीक्ष्ण वुद्धिको के स्तुति गरौं..! यस्तो न्याय अन्यत्र कहाँ पाइएला र..? यो त "मोटाको घाँटी फाँसीको फन्दामा अटाउँदैन भने दुब्लोलाई चढाईदेऊ" भन्ने साक्षात् अँधेरो नगरी, चौपट राजाको कहानी नभए अरु केहो?

## १७- लाखौं पशुहरुको बलि

सैयौं एवं हजारौंको सङ्ख्यामा पशुबलि आँफैमा एउटा आश्चर्य हो। जुन पशु दुध एवं कृषिका आधार हुन्, तिनलाई यस प्रकार निर्ममतापूर्वक मार्नु त भयङ्कर अपराधपूर्ण कृत्य नै मानिने छ। त्यसो त अहिले खेति-किसानी प्रति नै मान्छेको वितृष्णा छ तै पनि जसले खेति गर्दछन्, तिनीहरुले पशुको साटो मेशिनरी र रासायनिक मलको नै प्रयोग गर्न थालेका छन्। जे भए पनि यत्रो सङ्ख्यामा पशु मार्नु अवश्य नै चिन्ताको बिषय हो-

बाइबलः तब राजा सुलेमान अनि इस्राएलका सबै मानिसहरूले उनीसँगै परमप्रभुलाई बलि चढाए। सुलेमानले २२ हजार साँढे अनि १ लाख २० हजार भेडाहरूको बलि चढाए। यी सबै मेलबलि भेट बलि थिए। यस प्रकार इस्राएलका राजा अनि मानिसहरूले परमप्रभुलाई मन्दिर समर्पण गरे।(१ राजाः ८/६२-६३)

"राजा सुलेमान अनि इस्राएलका सारा समुदाय करारको सम्झौता सन्दूक अघि भेला भए। तिनीहरूले धेरै बलिहरू चढाए। तिनीहरूले यति धेरै भेडाहरू अनि पशुहरू मारे, कुनै मानिसले गन्ती गर्न सकेन।" (१राजाः ८/५)

समिक्षाः येहोवा परमेश्वरलाई खुशी पार्ने यो भन्दा उत्तम उपाय अरु के हुन सक्ला ?

धन्य हो ईसाईहरुको परमेश्वर येहोवा..! जो निर्दोष पशु-पंक्षीहरुको बलिले प्रसन्न हुन्छ।

विचरा ति मूक पशु-पंक्षीहरुले के बिगारेका थिए र तिनलाई बलि चढाईयो? "बाँच र बाँच्न देऊ" को सिद्धान्त कहाँ गयो? के तिनलाई बाँच्ने अधिकार छैन? शान्तिको दुत भनेर चिनिने ईसाले यसको विरुद्ध आवाज किन उठाएन?

महर्षि मनुले यस्ता ८ किसिमका मानिसलाई हत्या तथा हिंसाका भागीदार अर्थात् पापी मानेका छन्-

**अनुमन्ता विशसिता निहन्ता क्रयविक्रयी।**

**संस्कर्ता चोपहर्ता च खादकश्चेति घातकाः।।**

(मनुस्मृति ५।५१)

पशुलाई मार्नका लागि आज्ञा या अनुमति दिनेवाला, पशुलाई मार्नेवाला, मासु काट्नेवाला, पशुलाई मार्नका लागि किन्नेवाला, बेच्नेवाला, मासु पकाउनेवाला, पस्कनेवाला र खानेवाला यी सबै हत्यारा तथा पापी हुन।

महर्षि दयानन्द सरस्वतिले भनेका छन्- उपकारक प्राणिहरुको हिंसा अर्थात्.....त्यस्ता पशुहरुलाई मार्न नदिऔं। (स. प्र. सामु. १०)

हात्ती. घोडा तथा गधा आदि बाट पनि ठूलो उपकर हुन्छ, त्यस्ता पशुलाई मार्ने कृत्यलाई सब मानिसहरुको हत्या गरे सरह सम्झनु।(स.प्र. समु.१०)

जहिले देखि विदेशी मांसाहारी भारतमा आएर गो आदि पशुहरुलाई मार्ने मांसाहारीहरु राज्याधिकारी भए, तब देखि क्रमशः आर्यहरुको दुःखको वृद्धि हुँदै जान्छ।(स.प्र. समु.१०)

**मांसाहारिणः कुतोः दया।।** मांसाहारीमा दया कहाँ?

जब ईसाईहरुको ईश्वर नै मांसाहारी छ भने उसमा दयाको के काम? (स.प्र. समु.१३)

मांसाहारको व्यक्तिमा के प्रभाव पर्दछ? यसमा महर्षि दयानन्दले भन्छन्-

त्यस मनुष्यको स्वभाव मांसाहारी भएर हिंसक हुन सक्छ।(स.प्र.समु.१०)

पशु-पंक्षीहरुलाई मार र ईश्वरलाई प्रसन्न गर भन्ने सिद्धान्त बाइबलको हो।यसको विपरित वेदले भन्छ-

**पशून् पाहि।।** (यजु.१/१)

पशुहरुको रक्षा गर।

गौलाई वेदमा अघ्न्या "अर्थात्" अवध्य भनिएको छ जसको अर्थ हुन्छ-नमार्न योग्य।

हेर्नुस्, गौलाई वेदमा अवध्य रुपमा नमस्ते गरिएको छ-

**रुपायाघ्न्ये ते नमः।।**(अथर्व.१०/१०/१)

हे अघ्न्ये (अवध्य) गौ! तिम्रो स्वरुपलाई प्रणाम छ।

महाभारत शांतिपर्व अध्याय-२६२/४७ मा भनिएको छ-

**अघ्न्या इति गवां नाम क एतां हन्तुमर्हति।**

**महच्चकाराकुशलं वृषं गां वा लभेत तु यः ।।**

अर्थात- श्रुतिमा गौलाई अघन्या (अवध्या) भनिएको छ। यस्तो स्तिथिमा कसले उनलाई मार्ने विचार गर्ला? जसले गाई र नन्दीलाई मार्दछ, त्यसले महान पाप गर्दछ।

**गां मा हिंसीः ।।** (यजु.१३/४३)

गाईलाई नमार।

त्यसैगरी भैंसी, भेडा, बाख्रा, घोडा, गधा आदि पशुलाई मार्न पनि निषेध छ।

## १८- वेदमा सर्वकल्याणको कामना

**गावः सन्तु प्रजाः सन्त्वथो अस्तु तनूबलम् ।।** (अथर्व. ९/४/२०)

हाम्रो राष्ट्रमा गौ होऊन्, प्रजा होऊन् र सबैमा शारीरिक बल पनि होओस्।

**चतुर्नमो अष्टकृत्वो भवाय दश कृत्वः पशुपते नमस्ते।**

**तवेमे पञ्च पशवो विभक्ता गावो अश्वाः पुरुषा अजावयः** ॥अथर्वः११/२/९ ॥

सुख उत्पादक परमेश्वरलाई चार पटक, आठ पटक नमस्ते छ।हे पशुपते! अर्थात् पशुहरुका रक्षक स्वामी! तिमीलाई दस पटक नमस्ते छ। विभिन्न योनिमा विभाजित यी पाँच प्रकारका प्राणि-गौ,घोडा,पुरुष,बाख्रा र भेडा हुन्।

## १९- पशुहिंसकहरुका लागि दण्डविधान

**यदि नो गां हमि यद्यश्वं यदि पूरुषम्।**

**तं त्वा सीसेन विध्यामो यथा नोऽसो अवीरहा॥**

(अथर्व.१/१६/४)

यदि कसैले हाम्रा गौ, घोडा र तिनका सेवकलाई मार्छ भने त्यसलाई हामी सिसाको गोलीले मारिदिने छौं, जसले गर्दा हाम्रा ति पशु र वीर सेवकहरुलाई नाश गर्ने कोहि नरहोस्।

**{सन्दर्भः प्रस्तुत पुस्तकमा दिइएका बाइबलका समस्त उद्दरणहरु नेपाल बाइबल सोसाइटी द्वारा प्रकाशित पवित्र बाइबल-सरल नेपाली (Nepali Holy Bible) संग सम्बन्धित छ।}**

## २०- अहिंसाको महत्ता

**योऽहिंसकानि भूतानि हिनस्त्यात्मसुखेच्छया ।**

**स जीवांश्च मृतश्चैव न क्व चित्सुखं एधते ।।** मनुः ५/४५ ।।

जसले आफ्नो सुखको इच्छाले कहिल्यै नमार्न योग्य निरपराध प्राणिहरुको हत्या गर्दछ, त्यसले जिउँदो हुँदा सम्म र मरेपछि पनि कदापि कहीं पनि कुनै प्रकारको सुख प्राप्त गर्न सक्दैन।

**यो बन्धनवधक्लेशान्प्राणिनां न चिकीर्षति।**

**स सर्वस्य हितप्रेप्सुः सुखं अत्यन्तं अश्नुते।।**मनुः ५/४६ ।।

जसले प्राणिलाई बंधनमा राखेर, वध गरेर तिनलाई पीडा दिने इच्छा गर्दैन, त्यो व्यक्ति समस्त प्राणिहरुको हितैषी भएर अधिक सुख प्राप्त गर्दछ।

**यद्ध्यायति यत्कुरुते रतिं बध्नाति यत्र च।**
**तदवाप्नोत्ययत्नेन यो हिनस्ति न किं चन।।**मनुः ५/४७ ।।

जसले कुनै पनि प्राणीको हिंसा गर्दैन त्यसले जसको ध्यान गर्दछ, जुन काम गर्दछ र जहाँ धैर्यता पूर्वक मन लगाउँछ, त्यो सुगमता पूर्वक प्राप्त गर्दछ।

**नाकृत्वा प्राणिनां हिंसां मांसं उत्पद्यते क्व चित्।**
**न च प्राणिवधः स्वर्ग्यस्तस्मान्मांसं विवर्जयेत्।।**मनुः ५/४८ ।।

प्राणिहरुको हिंसा नगरेर कदापि मासु प्राप्त हुँदैन र जीवहरुको हत्या गर्नु सुखदायक छैन, त्यसैले मासु खानु हुँदैन।

**समुत्पत्तिं च मांसस्य वधबन्धौ च देहिनाम्।**
**प्रसमीक्ष्य निवर्तेत सर्वमांसस्य भक्षणात् ।।** मनुः ५/४९ ।।

मासुको उत्पत्ति जसरि हुन्छ, त्यसलाई, प्राणिहरुको हत्या र बन्धनको कष्ट देखेर सबै प्रकारको मासु खान बाट टाढै रहौं।

**अनुमन्ता विशसिता निहन्ता क्रयविक्रयी।**
**संस्कर्ता चोपहर्ता च खादकश्चेति घातकाः।।**
(मनुस्मृति ५।५१)

पशुलाई मार्नका लागि आज्ञा या अनुमति दिनेवाला, पशुलाई मार्नेवाला, मासु काट्नेवाला, पशुलाई मार्नका लागि किन्नेवाला, बेच्नेवाला, मासु पकाउनेवाला, पस्कनेवाला र खानेवाला यी सबै हत्याका तथा पापका समान भागीदार छन्।

## पढौं वेदको ज्ञान

**पढेर वेदको ज्ञान, मेटाईदेउ अज्ञान — अरे नादान।।**
**अग्नि, वायु थिए ऋषि महान, आदित्य, अंगिरा पनि विद्वान।**
**पाए उनले प्रथम वेदको ज्ञान, पढ वेदको ज्ञान, - अरे नादान।।१।।**
**आदि ग्रन्थ हुन् वेद भन्ने, ब्रह्मज्ञान र मुक्तिका दाता।**
**अन्य पथको नगर अभिमान, पढ वेदको ज्ञान — अरे नादान।।२।।**

ईश्वर हो यो सृष्टि रच्ने, भोगी जीवले कर्म नै गर्दछ।
प्रकृति हो भोग्य विधान, पढ वेदको ज्ञान — अरे नादान।।३।।
वेदमा कुनै इतिहास छैन, जादू-टुना र बकवास छैन।
हेर भरिएको छ सद्ज्ञान, पढ वेदको ज्ञान — अरे नादान।।४।।
सायणले कति अनर्थ गरे, महिधर-उव्वटले अनुचित अर्थ गरे।
दयानन्दले दिए सहि अर्थको ज्ञान, पढ वेदको ज्ञान — अरे नादान।।५।।
वेदभाष्यको नवयुग आयो, दयानन्दले हो सत्यपथ देखाएको।
आयो हेर कस्तो स्वर्णिम विहान, पढ वेदको ज्ञान — अरे नादान।।६।।

समताको यसले पढाउँछ पाठ, भेदभावको कुनै राख्दैन नाता।
सर्वहित बनेको एक विधान, पढ वेदको ज्ञान — अरे नादान।।७।।
दयानन्दको नाद यहि हो, सत्यज्ञानको स्रोत यहि हो।
सद्गुणको हो यो खान, पढ वेदको ज्ञान — अरे नादान।।८।।
संस्कारको यसले महिमा गाउँछ, सबलाई कर्तव्य सदा सिकाउँछ।
सुख पाउ यसको गरिमा जान, पढ वेदको ज्ञान — अरे नादान।।९।।
चतुर्वेदको सार हो गायत्री, यसैलाई भनिन्छ सावित्री।
यो भन्दा छैन पावक छन्द महान, पढ वेदको ज्ञान — अरे नादन।।१०।।
प्रभुको नाम उसको गुण अनुरुप, त्यो हो सत् चित् आनन्दस्वरूप।
प्रमुख ओम् नामलाई जान, पढ वेदको ज्ञान — अरे नादान।।११।।
परमेश्वर छ निरन्जन-निराकार, कहिल्यै लिदैन उसले अवतार।
घट-घटमा उसलाई व्यापक जान, पढ वेदको ज्ञान — अरे नादान।।१२।।
पापमा ऊ लिप्त छैन, विकारले उसलाई कहिल्यै छुदैन।
"वेद" ले गर्दछ यहि बखान, पढ वेदको ज्ञान — अरे नादान।।१३।।

==================================================

# समाप्त

==================================================